ॐ

महेश-संस्कृत-गुरुकुल-विद्यापीठम्
महेश-छात्र-समूहको दोस्रो प्रकाशन

# महेश-साहित्य-सङ्गम

वर्ष-२ अङ्क-२ २०७१ वैशाख

**संरक्षक**
परमपूज्य गुरुवर
डा. स्वामी रामानन्द गिरि

**सल्लाहकार**
डा० गुरुप्रसाद सुवेदी

**सम्पादक**
नारायणप्रसाद घिमिरे
चिरञ्जीवी खतिवडा
पर्वतराज घिमिरे
सागर रेग्मी
कोमल नेपाल

**कम्प्युटर टङ्कण**
सन्दीप तिमिल्सिना

**कम्प्युटर ले-आउट**
parvat201@hotmail.com

**पत्राचारको लागि**
महेश-संस्कृत-गुरुकुल-विद्यापीठ
महेश-साहित्य-सङ्गम
देवघाट-२, तनहुँ

## सम्पादकीय........

पूज्य गुरुज्यूको साहित्यानुरागले नै हामीहरूलाई केही लेख्न सिकायो। समाजलाई सन्मार्गमा अग्रसर गराउने उद्देश्यका साथ खोलिएको यस गुरुकुलबाट साहित्यले पनि समाजलाई सन्मार्गमा डोऱ्याउनुपर्छ भन्ने कुरा हामीले सिक्यौँ। गुरुकुलमा सिकेको पाठ समाजलाई बुझाउने सन्दर्भमा महेश-साहित्य-सङ्गम खडा भयो । केही कमजोरीहरूका बाबजूद पनि हामीहरूले पहिलो अङ्क प्रकाशन गऱ्यौँ । दोस्रो अङ्क पनि त्यही प्रकाशनको निरन्तरता हो ।

पूज्य गुरुज्यूको सत्प्रेरणाको मलजल पाएर गुरुकुलोद्यानमा लागेका विद्यालयस्तरमा अध्ययनरत कविकलिका र फक्रने क्रममा रहेका विद्यापीठका कविकुसुमहरूको रचनासौरभ पहिलो अङ्कमा सुवासित थियो। यस अङ्कमा विद्यापीठमा अध्ययनरत छात्रहरूका रचनाहरू मात्र समाविष्ट छन् । आशा गर्छौं यी रचनाहरू अवश्य भावकहरूको सुकोमल हृदयलाई आह्लादित गर्न समर्थ हुनेछन्। यो अङ्क कविता, गजल, मुक्तक, हाइकु, गेडी, तान्का र संस्कृत गीतरूपी सप्तगण्डकीको सङ्गम बनेको छ । त्यस्तै यो पौरस्त्य र पाश्चात्य शैली तथा समस्त विद्यार्थीहरूको भावना र विचारको सङ्गम पनि बनेको छ। तपाईंहरूको हातमा रहेको यो अङ्क स्रष्टा र पाठकहरूको भावनागङ्गाको सङ्गम बन्न सक्नेमा हामी विश्वस्त छौँ। नाम र दामका लागि सिर्जना गर्नुभन्दा केही काम र आत्मारामका लागि काव्य सिर्जना गर्नुपर्छ भन्ने मान्यताको परिधिमा यो साहित्य सङ्गम रहेको छ ।

पत्रिकाको यो अङ्क तयार गर्ने क्रममा प्रेरणा, उत्साह तथा सल्लाह दिनुहुने विद्यापीठका प्राचार्य गुरुज्यू तथा विशेष सहयोग पुऱ्याउनुहुने अन्य गुरुहरूप्रति हामी आभारी छौँ । पत्रिकाका लागि रचना उपलब्ध गराउने समग्र स्रष्टा साथीहरूमा हामी कृतज्ञ छौँ । साथै नववर्ष २०७१ को अवसरमा समग्र स्रष्टा, पाठक तथा भावकहरूप्रति सुस्वास्थ्य, सुख, शान्ति र समृद्धिको हार्दिक मङ्गलमय शुभकामना व्यक्त गर्दछौँ ।

काव्यशास्त्रविनोदेन कालो गच्छति धीमताम् । व्यसनेन च मूर्खाणां निद्रया कलहेन च ॥

ईशानः सर्वविद्यानाम्

# शुभाशंसा

यस महेश-संस्कृत-गुरुकुल-विद्यापीठमा अध्ययनरत छात्रहरूको सक्रियतामा महेश-साहित्य-सङ्गमको दोस्रो अङ्क प्रकाशित हुन लागेको समाचारले मलाई अत्यन्त आनन्दित तुल्यायो । गतवर्षदेखि सुरु भएको यो छात्रहरूको सत्प्रयास आगामी दिनमा अझै समृद्ध र व्यवस्थित हुने मैले अपेक्षा राखेको छु । गतवर्षको अङ्कमा भन्दा थप परिष्कृत रूपमा उपस्थित भएको यो साहित्य सङ्गममा पौरस्त्य र पाश्चात्त्य दुवै साहित्यिक सिर्जनाका शैलीको समागम भएको देखिन्छ ।

अध्ययन एउटा विशिष्ट क्षमता आर्जन गर्ने अवसर हो भने लेखन त्यहाँभन्दा अझ महत्त्वपूर्ण अभिव्यक्तिकौशल हो । हाम्रो प्राच्य परम्परामा **'शतं वद मा लिख'** अर्थात् बोल्न सजिलो हुन्छ तर लेख्न धेरै विचार पुऱ्याउनुपर्छ भन्ने मान्यता थियो । आज केही लेख्दैमा साहित्य हुन्छ भन्ने मान्यता लिने पल्लवग्राही पाण्डित्यको संस्कार विकसित हुँदै गएको अवस्थामा निश्चित साहित्य सिद्धान्त र परम्पराको समेत अनुशीलन गरी साहित्यिक सिर्जना गर्ने जनशक्तिको खाँचोको महसुस लागेको छ । यस्तो अवस्थामा यस गुरुकुलका छात्रहरूले गुरुकुलमा सिकेको साहित्यसिर्जनाको कौशलले भविष्यमा समाजलाई सकारात्मक सन्देश दिन सघाउनेछ भन्ने कुरामा म विश्वस्त छु ।

साथै यस साहित्य सङ्गममा रचना समावेश गर्ने छात्रहरू र पाठ्यपुस्तकको रूपमा तयार गर्ने सक्रिय छात्रहरूलाई धन्यवाद दिँदै आगामी दिनमा छात्रहरूको प्रतिभा अझै प्रस्फुटित हुँदै जाओस् भन्ने कामना गर्दछु । शङ्करोतु शङ्करः ।

डा. गुरुप्रसाद सुवेदी<br>
प्राचार्य<br>
**महेश-संस्कृत-गुरुकुल-विद्यापीठ**

# विषयसूची

# श्रीपशुपतिनाथषट्कम्

गणेश शर्मा सुवेदी

नागेन्द्रभूषणसुशोभितकण्ठदेशं
भूताधिपं सुवसनीकृतव्याघ्रकृत्तिम् ।
गङ्गाधरं डमरुहस्तमभीतिमुद्रं
तं श्रीविभुं पशुपतिं भज राष्ट्रदेवम् ॥

गाङ्गेयपुष्करसुषिक्तजटाकलापं
शैलेन्द्रजाहृतहृदं वृषभाधिरूढम् ।
कैलाशवासिनमधोक्षजप्रेष्ठमीशं
तं श्रीविभुं पशुपतिं भज राष्ट्रदेवम् ॥

ब्रह्मेन्द्रवाक्पतिसुरार्चितपादपद्मं
वैराग्यज्ञानभजनाश्रितयोगगम्यम् ।
इन्द्वर्कवह्निनयनं भुवनाभिरामं
तं श्रीविभुं पशुपतिं भज राष्ट्रदेवम् ॥

भूताधिपं भुवनपालकमिन्दुभालं
वेदान्तवेद्यमसुरघ्नमनन्तकीर्तिम् ।
कल्याणदं सकरुणं कलिकल्मषघ्नं
तं श्रीविभुं पशुपतिं भज राष्ट्रदेवम् ॥

कालेश्वरं क्रतुभुजं करुणानिधानं
कन्दर्पहं कलिमलौघहरं परेशम् ।
कल्पान्तकं निजगलस्थितकालकूटं
तं श्रीविभुं पशुपतिं भज राष्ट्रदेवम् ॥

श्रीवाग्वतीतटविराजितमम्बिकेशं
नेपालराष्ट्रहृदयं नयनाभिरामम् ।
पञ्चास्यमिन्दुमुकुटं पशुपाशवज्रं
तं श्रीविभुं पशुपतिं भज राष्ट्रदेवम् ॥

-पोखरा-७, मासवार

# सन्देश



भीमप्रसाद खतिवडा

-शार्दूलविक्रीडित

सक्छौ जान जहाँ खुसी मनसले प्यारो छ माटो यही
आफ्नो जन्म हुने त्यही स्थलसरी मिल्दैन पाटो कहीँ ।
हिँड्ने मार्ग रहन्छ एक जहिल्यै बाटो हजारौँ पनि
आफ्नै त्यो प्रिय हुन्छ पुत्र जहिल्यै लाटो भएता पनि ॥१

आफैँभित्र रमाउनू अझ भने हाँसेर बाँच्नू सधैँ
ठूलो लक्ष्य समाउनू प्रगतिको बाटो नभुल्नू कतै ।
आफ्नो नाम कमाउनू अमर भै चल्दै रहोस् वासना
आत्मा स्वच्छ बनाउनू जलसरी बग्दै रहोस् भावमा ॥२

प्राणीको घर एउटै जगत हो आधार सम्पूर्णको
छुट्टै जात भए पनि रगतले सारा भिजेको छ यो ।
यस्तो मूल्य हुँदाहुँदै फगतमा तेरो र मेरो किन
यौटै दृष्टि बनोस् समान मत होस् फुल्दै रहोस् जीवन ॥३

चम्कोस् कान्ति धपक्क हेर रविझैँ सारा हटोस् अन्धता
तिम्रो उच्च रहोस् सदैव पदवी बढ्दै रहोस् स्निग्धता
हाँक्नू यो भव कालिदास कवि भै उड्नू तिमी भावमा
जोगाऊ नगुमोस् कदापि छवि त्यो तिम्रै रहोस् साथमा ॥४

फुल्छौ फूल तिमी तथापि कहिल्यै माली नबिर्से कतै
बाँझो यो दुनियाँ छ जोत्नु कसरी बिर्सेर फाली सधैँ ।
आफ्नै ठान जतासुकै छ ममता खाली नहोला कहीँ
गर्छौ स्वागत गर्नु आज सबले हानेर ताली यहीँ ॥५

-लामिडाँडा-८, दोलखा
anuragkhatiwada@yahoo.com



सन्तोष अधिकारी

# हाँस्नु हो जिन्दगानी

*-मन्दाक्रान्ता*

बाँच्ने मान्छे भुवनभरमा कत्ति छन् कत्ति हुन्छन्
हाँस्ने मान्छे तर विरल छन् भत्भती भित्र रुन्छन् ।
हाँस्छन् कोही मनमन रुँदै हाँस्न सङ्कोच मानी
हा हा गर्दै गदगद भई हाँस्नु हो जिन्दगानी ॥१

कोही हाँस्छन् प्रणयसुखमा मुस्कुराई सुसेली
हाँस्छन् कोही विपत अरुले पाउँदा दन्त खोली ।
कोही हाँस्छन् स्मृतिपटलका सम्झँदै ती कहानी
भित्री कुण्ठा चिरचिर चिरी हाँस्नु हो जिन्दगानी ॥२

हाँस्ने यौटा प्रकृतिविधि हो सिद्धले हाँस्नुपर्छ
बच्चाबच्ची तरुणतरुणी वृद्धले हाँस्नुपर्छ ।
हाँस्नैलाई डलररुपियाँ तिर्नुपर्दैन नानी
सित्तैँमा हो, नगर दुविधा हाँस्नु हो जिन्दगानी ॥३

व्यर्थै चिन्ता लिइकन कुनै हुन्न राम्रो भविष्य
हाँसो यौटा प्रकटित गरौँ हाँस्छ अर्को अवश्य ।
ऊर्जा हो यो थकितजनको भर्छ नौलो जवानी
भित्रैदेखी पुलकित बनी हाँस्नु हो जिन्दगानी ॥४

कालो रुञ्चे वदन त्यसकै हुन्छ जो कोपमा छ
त्यस्को छुट्टै चमक छ अहो जो सधैँ हाँसिराख्छ ।
अल् इज् वेल् को स्मरण गर लौ मृत्युपश्चात् खरानी
खित्का छोडी खितितिति गरी हाँस्नु हो जिन्दगानी ॥५

-देवघाट-४, तनहुँ
santosh.adhikari49@yahoo.com

# अकिञ्चनोऽहम्



चिरञ्जीवी खतिवडा

-पृथ्वी

मदीयमनसो मुदं वितनुतां सदा शङ्करः
स्वयं हृदयसद्मनि स्थितिमियात् स पीडाहरः ।
प्रफुल्लितमना भवानि सततं सदा जीवने
न वै भ्रमयतां पुनः शिव ! घने जगत्कानने ॥१

विलाप-परिहास-रोदनयुतं सदैवाद्भुतम्
निशम्य दिनमेति कष्टसहितं जनानां रुतम् ।
कदा सुखमवाप्यते जगति कर्हिचित् पीडनम्
कथं नु विदितं भवेज्जगदिदं, मृषा कल्पनम् ॥२

प्रभाकर इतः प्रकाशयति किं प्रभातं सदा
उदित्य पुनरस्तमेति भुवने किमर्थं तदा ।
जनानुपदिशन् जनिस्थितिलयाः समेषामिति
स्वयं रविरुदेति तिष्ठति पुनर्लयं गच्छति ॥३

अनित्यलघुजीवने किमपि किं विधेयं खलु
स्वकीयसकलं मनःस्थकलुषं विहेयं खलु ।
वृथा जगति मोह-शोक-निखिला व्यथावर्धकाः
विहाय सकलान्, भवेम सकलाः प्रभो सेवकाः ॥४

सदा तव सुशीतलं करुणदं भवेद्दर्शनं
सुखेन परिपाल्यतां मम पुनः प्रियं जीवनम् ।
इदं मम मनः शिवे हि रमतां भवत् कोमलं
कुरुष्व चरणारविन्दमधुपं चिरञ्जीविनम् ॥५

कल्लेरी-३, धादिङ
ck_achal@yahoo.com

# राम



शेखरराज पाण्डे

*-वसन्ततिलका*

यो भक्तिभाव कहिल्यै नघटोस् तिमीमा
आस्था सधैँ बढिरहोस् अझ जिन्दगीमा ।
जाग्रत् र स्वप्न, जहिले पनि गुन्गुनाऊँ
हे राम ! राम शुभनाम सधैँ म गाऊँ ॥१॥

छन् दुःख धेर, भवसागर दुःख नै हो
यौटै छ मार्ग सुखको प्रभुनाम नै हो ।
यै नाममा मन र कर्म दुवै लगाऊँ
हे राम ! राम शुभनाम सधैँ म गाऊँ ॥२॥

बाल्दा दियो झलल, भाग्दछ अन्धकार
देखिन्छ झल्मल सबैतिर वारपार ।
बालेर दीप मनको तम फाल्न पाऊँ
हे राम ! राम शुभनाम सधैँ म गाऊँ ॥३॥

चोला छ दुर्लभ अहो अब बुझ्नुपर्छ
छन् भित्र राम, अब केवल चिन्नुपर्छ ॥
फुल्दो गुलाबसरि जीवन यो बनाऊँ
हे राम ! राम शुभनाम सधैँ म गाऊँ ॥४॥

जाँदैन प्राण जबसम्म रहन्छ शक्ति
यो चित्तले गरिरहोस् अझ रामभक्ति ।
पैले बुझूँ अनि भनूँ जय राम नाउँ
हे राम ! राम शुभनाम सधैँ म गाऊँ ॥५॥

कैल्यै हुँदैन परिपूर्ण कुनै मनुष्य
यो रामनाम नभजीकन हे अवश्य ।
गाएर राम अविराम, त्यहीँ हराऊँ
हे राम ! राम शुभनाम सधैँ म गाऊँ ॥६॥

- नौबिसे-४, धादिङ
pandeyshekhar80@yahoo.com

# जागृति

-मालिनी



प्रदीप रेग्मी

समयसित बढेको रीतमा हुर्किँदैछौ
असिम प्रकृतिको यो प्रीतमा हुर्किँदैछौ ।
नबस अब तिमीले भित्र भो शून्यताको
परिचय बुझ आफ्नो के म, को, खै कहाँको ॥१

नगर नगर कालो दृष्टि मान्छेहरूमा
गर न गर उज्यालो दृष्टि मान्छेहरूमा ।
परिश्रम गर आफैँ, खर्च, आफैँ कमाइ
परनयन भिजाई गर्नु के दाजुभाइ ॥२

छलकपट हटाई बुद्धिले खेल खेल
समयसित समस्या आउँछन् जालझेल ।
जगत सब तिमी हौ, खोज्दछौ के अरुमा
कुद न कुद मजाले पाउँछौ के मरुमा ॥३

हिमगिरि तलबाटै हेर्दछौ के उचाइ
मन थुरथुर पार्दै बस्दछौ के डराई ।
नभन अब तिमीले जिन्दगी एकछाकी
बढ अघि बढ आफैँ जोशले होस राखी ॥४

-ताक्लुङ-१, गोरखा
pradipregmi21@yahoo.com

# हाइकु

चञ्चल

स्वप्न देख्दैछु
सुन्दर छ संसार
नब्यूँझेसम्म ॥

रित्तो क्षितिज
सूर्य उदाउँदैछ
पर्ख न पर्ख ॥

बग्दैछ खोला
बगर हेरिरहेछ
पानी मौन छ ॥

बाँझो बारीमा
भोकमरीबाहेक
के नै फल्छ र ?

गन्तव्यहीन
आकाशको रिक्तता
उड्दैछ चरा ॥

हात नथापी
सबैले दिइहाल्छन्
कठै बिचरा !

-महेश विद्यापीठ

# गुरुकुल



सूर्यप्रसाद पौडेल

सलल बग्छ यो गण्डकीजल
अमल बन्छ यो चित्त हर्पल ।
अनि नयाँ नयाँ फल्दछन् फल
कुसुमझैँ फुलोस् यो गुरुकुल ॥१

घनन घन्कियोस् वेदको ध्वनि
श्रुति पुराण वा काव्य नै पनि ।
अझ बनोस् सधैँ स्वच्छ निर्मल
कुसुमझै फुलोस् यो गुरुकुल ॥२

मनुजका सबै दम्भ दुर्मति
कलुषता हरी होस् समुन्नति ।
हृदयमा बगोस् प्रेमको जल
कुसुमझैँ फुलोस् यो गुरुकुल ॥३

अब बनोस् यहाँ केन्द्र धर्मको
हृदयले बुझोस् भाव मर्मको ।
अचल होस् सधैँ चित्त चञ्चल
कुसुमझैँ फुलोस् यो गुरुकुल ॥४

-ढोरफिर्दी-२, तनहुँ
suryapoudel448@yahoo.com

# तान्काहरू

अचल

कवि बन्दैछन्
घोरिएझैँ गरेर
बाह्य गहना
झोक्राएका कुखुरा
हिमशैल टाकुरा ॥

पानी बग्दैछ
नफर्किने बाटोमा
खतरा बेला
बाल-वृद्ध-जवान
जन्त-पार्टी-मलाम ॥

समय कस्तो
खाँदै पिउँदै उकेल्दै
अगस्तिजस्तो
मेरा बाले देखेनन्
व्यास बाले लेखेनन् ॥

टोपी कुल्चेर
उद्दण्ड अहंतामा
शिर झुक्दैन
सीमामा समेट्दैछौ
मानिस लखेट्दैछौ ॥

वृद्ध मुहार
समयले खुम्चेका
कमलजस्तै
नयाँ बिरुवाहरू
उपहास गर्दैछन् ॥

खान्तेपिन्तेमा
नमस्कार गरेर
शिर बाङ्गियो
मयूरले मासुमा
प्वाँख बेच्यो कसरी ?

-देवघाट

# काली गण्डकी



टीकानाथ अधिकारी

-स्वागता

मुक्तिनाथ शिरमूल फुटेर
साथमा नदनदी बटुलेर ।
बग्दछिन् सलल शीतल पानी
धन्य हुन्छ जसबाट जवानी ॥१

बालुवा अचल पत्थर माथि
खोल्दछिन् सरस कोमल छाती ॥
बग्दछिन् मधुरशब्द निकाल्दै
काठ पात अरु वस्तु धकेल्दै ॥२

फाँटबाट वन कुञ्ज सुसेल्दै
छालका लहरले अनि खेल्दै ।
भिज्दछ्यौ मनुज प्रेम नजर्मा
कुद्दछ्यौ सलल नित्य वगर्मा ॥३

लेक खोँच सबमा गति उस्तै
सर्पकै सरि गरेर दुरुस्तै ।
टापु शैल सब चक्कर लाई
गुञ्जिदै सकल लोक जगाई ॥४

खुल्छ बल्ल सबमा सुविवेक
स्पर्शमात्र जब पाउँछ एक ।
पुण्यपुञ्ज सब छन् जलभित्र
छोइ हेर अब हुन्छ विचित्र ॥५

सङ्ग गर्न जसको मन गर्दा
शुद्ध भै स्मरणले मन भर्दा ।
भक्ति मुक्ति अनि तुष्टि र शक्ति
मिल्दछन् सहज ज्ञान विरक्ति ॥६

स्नान आचमनले सब पाप
नाश हुन्छ तब पो फलिफाप ।
गण्डकी चपल भङ्ग तरङ्गे
लोभ, मोह, ममता हर गङ्गे ॥७

tikanathadhikari@gmail.com

## नियतिलीला

नपुंसकं परिज्ञाय प्रियायै प्रेषितं मनः ।
तत्तु तत्रैव रमते हताः पाणिनिना वयम् ॥

सावित्री विधवा जाता ईश्वरो भारवाहकः ।
अमरो मृत्युमापन्नः दीर्घजीवी च ठण्ठवः ॥

# कविता

*-पृथ्वी छन्द*



कोमल नेपाल

उदाउँछ प्रभातमा रवि नवीन उल्लासमा,
छरी प्रबलकान्ति हुन्छ नवभावना भावमा ।
तिनै सकल दीप्ति हट्दछ पुगेर अस्ताचल,
उसै छ सबको अथाह धनसाथ यो आँचल ॥१॥

विनाकरण आफुमा रचयिता बनी माकुरो,
त्यसै जगत सृष्टि, लीन उसले अनायास नै ।
नदी सतत साथ खोज्दछ असार त्यो सागर,
उही अचल तत्त्व नै सकल सिर्जनाको घर ॥२॥

अनेक फलतुल्यझैँ विविध स्वाद माधुर्यको,
पुगेर रसना सदा विलय हुन्छ आस्वादको ।
नवीन सुखकल्पना मृगमरीचिकातुल्य छ,
शरीरसुखलालसा धन र कामना त्याज्य छ ॥३॥

शरीर वयभेद बालक, युवा, जराले छुँदा,
कतै सुख रवाफ साथ भय दुःख चिन्ता हुँदा ।
असत्य, अविवेक कर्म ममता, अहङ्कारमा,
तटस्थ सब दृश्य हेर्छ अविकार त्यो साथमा ॥४॥

उठेर सहसा तरङ्ग जलबीचमा छालको,
बनेर क्षणमा मनोहर प्रभाव आनन्दको ।
छ रूप, गुण, नाम, कार्य सब साधना भिन्नता,
तथापि मदवासनारहित ज्ञानले एकता ॥५॥

विशाल हिमशृङ्खला वन, पहाड, त्यो कन्दरा,
अनन्त अनमोल दौलत उता सुखी सम्पदा ।
छ एक जनसाथमा सकल वासना स्वप्नको,
समान गति सम्झनू मरण जीवमा जन्मको ॥६॥

सदा कुसुमझैँ फुली मधुर मुग्ध मुस्कान त्यो,
बली चमक ज्ञानदीप मन शुद्ध पार्दा कसो ।
हटी विषय वासना मनुजगम्य निर्वाणमा,
पुगी गर सदा सबै रमण दिव्य त्यो धाममा ॥७॥

दुईपीपल १, नुवाकोट
komalnepal.kn@gmail.com



✍ सागर रेग्मी

# मानव

-अदितनया छन्द

मानवता बलिदान गरी हिँड दानवको प्रतिमूर्ति बनी
अन्ध समाज छ भन्दछ स्वार्थ सपार परार्थ भुलेर तिमी ।
देख्छु कुनै खुब गर्व गरी बलले अरुको शिरमाथि चढ्यो
रक्त र स्वेद बगाउँछ एक मुठीभर अन्न मिलेन लड्यो ॥१॥

जीर्ण कुरीति र नीति भजेर विभाजित बन्छ समाज भने
शोणितरञ्जित विश्व पखाल्न सहस्रनयन यदि बग्छ भने ।
जीवन बन्धन छन् जति तोड्नु र रीति नवीन बनाउनु छ
दम्भ भुलौँ र सुनीति रची सबमा अब प्रेम फिँजाउनु छ ॥२

प्रमिथस बन्नुछ चोर चिराग र सकल हटाउनु अन्ध प्रथा
दुःखितको सब दुःख हरी शुभभाव छरी मन पार सफा ।
हेर त भूतल आश्रय खोज्दछ दिन्छु भन्यौ यदि राज गर्‍यौ
बन्द गरी पिँजडा कुन तुष्ट भयो छलले यदि राज गर्‍यो ॥३

श्यामल बादल प्रलय बनी सब कल्मष दूर गरी बगिद्यौ
स्वच्छ गरी भव मन्द भई सबमा अनि प्राणसुधा भरिद्यौ ।
देख्दछु स्वप्न व्यवस्थित विश्व छ कलुषित भावविहीन मन
गर्छु भन्यौ सहयोग भने प्रण गर्छु बनाउँछु यो विपना ॥४

-गुर्जुधारा, काठमाडौँ
sheerbud@gmail.com

# मेरो कविता



अनिश सापकोटा

-भुजङ्गप्रयात

दुखेको मनैमा कुनी के छ छाम्दा
बिसञ्चो छ घाऊ पिरोल्दैछ धेरै ।
बढेको छ चिन्ता यिनै हर्न थोरै
कुनै छैन ठाऊँ जहाँ खुल्छ युक्ति ॥१

न निद्रा न प्यासै न हाँसो न भोक
छ छट्पट् गरेको सदा हुन्छ शोक ।
वियोगी भएरै कराईरहेको
तिनै जो छ मान्छे त्यसै हुन्छ कस्तो॥२

छ संसार यस्तो कि कष्टैविना त
न के नै भएथ्यो न होला त केही ।
यता हेर्छु कालो, उता हेर्छु कालो
कतै छैन सम्मै उकालै उकालो ॥३

कुनै छैन आशा कुनै मर्म ठूलो
कुनै छैन हाँसो कुनै धर्म ठूलो ।
जिउँदै मरेको, भएको छ काय
बचेझैँ गरेको कुनै सौख छैन ॥४

यता दुःख झेली, हदै कष्ट झेली
लडेका सडक्मा तिनै माथ टेक्दै ।
बिहानै बिहानै विधाता अगाडि
हजारौँ सुखीका हजारौँ पुकारा ॥५॥

हजारौँ इनारै बनाए रमाए
बनाएर द्यौता विलौना खनाए ।
विलापीरहेका कराईरहेका
कुनी के छ त्यस्मा हराईरहेका ॥६

यता रून्छ बच्चा, छ आमाविनाको
हुने वीर सच्चा, छ मायाविनाको ।
त्यता मर्छ बच्चा विना अन्नपानी
हरामी छ मान्छे, गरी आनकानी ॥७

नछोई गिलासै बनेँ लौ शराबी
विधानै छ कस्तो? छ केमा खराबी ।
नशा काव्यधारा, नशा गीतधारा
भुलाई रहन्छन् मलाई हजार ॥८

छ संसार बेग्लै बनौला म पापी
बने हातऔँला न जाने कसोरी ।
यिनै काव्य बोकी अझै गीत बोकी
निकाली अनौठा हदै प्रीत बोकी ॥१०

तिनै चित्र मेरा तिनै भाव मेरा
तिनै गीत मेरा तिनै काव्य मेरा ।
सुनौलो बिहानी सधैँ दिन्छ शब्द
पुर्‍याउँछ टाढा यिनै शब्द गाढा ॥११

पढी काव्य मेरा निकालेर आँशु
सराप्लान् निकाली कुनै शब्दजादु ।
खसालेर तातो अझै अश्रुधारा
तिनै अश्रुधारा बनेका सहारा ॥१२

-फुलबारी -६, चितवन
anish_sapkota62@yahoo.com

# मेरो मुहारमा लेखिएको कविता



पर्वतराज घिमिरे

म सानै छँदा,
प्रत्येक साँझ
आमाको चोरी औँलाअघि
उभिएको रुखको हाँगामा,
फुलेको जुनको प्रतिबिम्ब प्रष्ट थियो मेरो मुहारमा ।

आकाशको प्रत्येक तारा
आफ्नै हातले टिपेर
सपनाको महल सजाउने मेरो इच्छा,
सायद यौटा,
भावले लेखिएको, आफैँ भयाकि कविता थियो,
तर आज
ठूलो शब्दकोश दिमागमै छ र पनि,
कविताको एक हरफ विषयको खोजीमा
दिनरात म छट्पटाइरहँदा,
शिशुकालीन खुशीहरू दिमागमा बोलाउँदै,
टोलाइरहँदा
निधार खुम्चिएर विषादको रेखाले कोरेको निराशावादी कविता
नचाहेरै पनि
प्रकाशित छ मेरो मुहारमा ।

कोक्रोबाट, आमाको बुइ हुँदै
पिताको काँधसम्म चढेको मेरो मुहारको कविता,
बाबाको काँधबाट हाम्फालेर,
आफ्नै रहरका पछाडि म दौडिन थालेपछि,
आफ्नै मनको मैलोले,
मुहारको पाना मैलिएपछि,
आँखामा जूनको शीतलता,
ओठमा हिमाली हाँसो,
र गालामा फूलको लालीले,
मेरी आफ्नै आमाले लेखेको कविता,
मेटियो कि कुन्नि,
नत्र किन देखिन्न आज
यो मलीन मुहारमा ?

-लामिडाँडा-४, दोलखा
parvat201@hotmail.com

# गजल





हे मराज तिमिल्सिना

किन मार्छौ चरा बन्दुक चलाएर ।
हुँदैन देश हराभरा बन्दुक चलाएर ॥

कत्ति टुहुरा मरे कत्ति नाबालक मरे ।
नमार त्यसै भमरा बन्दुक चलाएर ॥

दोषीहरू निर्दोष हुन्छन् पैसा सुम्पिएर ।
गरीबलाई किन खतरा बन्दुक चलाएर ॥

यस्तै भए हामी जान्छौँ सँगै राष्ट्र जान्छ ।
बँच्दैन हेर धरहरा बन्दुक चलाएर ॥

सुतेको छ अबोध बालक आमा सम्झिएर ।
नतर्साऊ कठैबरा बन्दुक चलाएर ॥

-तिमिल्सैन-२, अछाम
timilsinasujan378@yahoo.com

पुरुषोत्तम रिजाल

देख्नासाथै रमाउँछ्यौ मुसुक्क हाँसेर ।
कत्ति मलाई तड्पाउँछ्यौ मुसुक्क हाँसेर ॥

डोको बोकी वनमा घाँस काट्दा पनि ।
मेरै गान गाउँछ्यौ मुसुक्क हाँसेर ॥

झनक्क रिस उठ्छ झोक चलाउँछ्यौ अनि ।
नम्र भई फकाउँछ्यौ मुसुक्क हाँसेर ॥

मात्तिएर हो कि एकान्तमा भेट्दाखेरि ।
किन नाक समाउँछ्यौ मुसुक्क हाँसेर ॥

प्रत्येकचोटि उपहारहरूसँगै मलाई ।
रातो गुलाफ चढाउँछ्यौ मुसुक्क हाँसेर ॥

समाजले बारम्बार कुरा काट्दा पनि ।
पुरु भन्दै आउँछ्यौ मुसुक्क हाँसेर ॥

-भूमेस्थान-७, धादिङ
rijal.puru@yahoo.com

## धनमाहात्म्यम्

ज्ञानवृद्धास्तपोवृद्धा वयोवृद्धाश्च ये परे ।
ते सर्वे धनवृद्धस्य द्वारे तिष्ठन्ति किङ्कराः ॥

यस्यास्ति वित्तं स नरः कुलीनः, स पण्डितः स श्रुतवान् गुणज्ञः ।
स एव वक्ता स च दर्शनीयः सर्वे गुणाः काञ्चनमाश्रयन्ते ॥



# गेडी

सन्दीप तिमिल्सिना

दायाँ खुट्टा बायाँ छ बायाँ खुट्टा दायाँ छ ।
तर पनि सबैमा यो देशको माया छ ॥
काम पाइन्न, विदेशको नाम गाइन्न ।

लुटपाट नगरी मिल्दैन है पगरी ।
कोही अघि बढ्दैन कोही यहाँ नमरी ॥
सत्ता जमायौ, कोट भिरी पैसा कमायौ ॥

हलो जुवा भिरेर ऋणै ऋण तिरेर ।
गर्छ कोही नमस्ते गोडा छोइ गिरेर ॥
दास बनेर, हुन्न यहाँ केही भनेर ॥

सहरिया साहुले, तिम्रो बूढो बाउले ।
आलु बेच्छ किलोमा सत्तरीको भाउले ॥
किन्न गएर, च्यामे मऱ्यो फेन्ट भएर ॥

मेरो बाको टोपीमा धागो उड्यो फिरिरी ।
चिसो हावा उडेथ्यो, चौतारीमा सिरिरी ॥
बस्न पाउँ म, आफ्नै गाउँ ठाउँ जाउँ म ॥

शमीबोट हरियो बसी के के गरियो ।
गाउँ छोडी विरानो अहिले बेसी झरियो ॥
जिन्दगानीको भर छैन बग्ने पानीको ॥

तबला र गितार घुम्रिएको कपाल ।
डिस्को डान्स चल्छ रे शहरमा बबाल ॥
पैसा बर्सिन्छ, गरिब थाङ्ना त्यसै तर्सिन्छ ।

-देउपुर-६, पर्वत
stimilsina447@gmail.com

# हाइकु

निरपेक्ष नेपाल

धनी जनता
गरिब हाम्रो देश
कोटभरि नोट

ब्रह्म विचार
संसार सारै झुटो
के गर्नु अब

नेताको देश
बाँकी के रह्यो शेष
टल्कियो कोट

चर्कियो घाम
टल्किए सबै दाम
मुखमा माम

पढ्ने यो काम
कहिल्यै सकिँदैन
कता फुर्सद

याद आउँछ
भेट्न मन लाग्छ
एकान्त स्थान

पूर्णिमा रात
नरम तिम्रो हात
याद आउँछ

## गजल



मधुसूदन पराजुली

उस्कै यादमा तड्पैं भन्दै बस्ने बानी छैन मेरो ।
कल्पनाको दबदबेमा फस्ने बानी छैन मेरो ॥

जत्ति लुट्नु मजा लुट्छु वर्तमान नै काफी लाग्छ ।
भूत भविष्यत् चराई मनलाई डस्ने बानी छैन मेरो ॥

जुन काम पनि खुली गर्छु लुकी छिपी हुन्न केही ।
चुकुल लगाई घरभित्रै पस्ने बानी छैन मेरो ॥

जे गर्दा नि विचार गर्छु पछि चिन्ता पर्छ भनी ।
भूल सम्झी छाँगाबाट खस्ने बानी छैन मेरो ॥

मान्छे हेरी आदर माया दुवै गर्न सिकेको छु ।
बेटो भन्छ सोझै चिप्लो घस्ने बानी छैन मेरो ॥

-सिन्धुकोट-३, सिन्धुपाल्चोक
pautpal@yahoo.com

## गजल



सागर दाहाल

विनाकसुर आँखा तरेर जान्छ मैले के गर्नु ?
संसार मासिने बीज छरेर जान्छ मैले के गर्नु ?
धान खाने मुसो चोट पाउने भ्यागुतो भएपछि ।
निर्दोष भ्यागुतो मरेर जान्छ मैले के गर्नु ?

जन्मिँदा कसैले पक्कै केही सिकेको हुँदैन ।
मष्तिस्कमा नारावादी भरेर जान्छ मैले के गर्नु ?
मालीले जत्ति स्याहार सुसार गरे पनि ।
फक्रिएपछि सबै फूल झरेर जान्छ मैले के गर्नु ?
हिजोसम्म तिमी नै हौ आधार भन्नेहरू ।
आज आफ्नै आँगन सरेर जान्छ, मैले के गर्नु ?

-कल्याणपुर-६, चितवन
sagardahal11@yahoo.com

## गजल



✍ महेश्वर नेपाल

साँच्चै त्यो हँसिलो मुहार मेरै लागि हो ।
भएको यो सृष्टि संसार मेरै लागि हो ॥

कसैको जीत कसैको हार हुन्छ निश्चय नै ।
स्वीकारेको त्यो मीठो हार मेरै लागि हो ॥

उनीहरू दिन्छन् म लिन्छु मनन गरेर ।
पाएको सबै सुविचार मेरै लागि हो ॥

आइलाग्छ भने कोही पक्कै जाइलाग्छु ।
हो चम्किलो त्यो तरबार मेरै लागि हो ॥

दिन्छन् साथ बन्धुबान्धवहरूले सधैँ ।
दिएको त्यो सबल, आधार मेरै लागि हो ॥

-बाँसबारी-८, सिन्धुपाल्चोक
mnepal13@gmail.com

---

## गजल



✍ थानेश्वर ज्ञवाली

सुख खोज्दैछौ रूपमा, जराग्रस्त जवानी मिल्नेछ ।
चितामा खोज्छौ अमरत्व, दैहिक खरानी मिल्नेछ ॥

सारङ्गीको च्याइँभन्दा गितारको झ्याइँ प्यारो भयो ?
एकपटक सुन त, तिम्रा पुर्खाको कहानी मिल्नेछ ॥

बालुवामा पसिना धारा बगाऊ सुकेरै जाने हो,
माटोमा परे त्यो थोपा कुबेरको राजधानी मिल्नेछ ॥

म मात्र र मेरो मात्र भनी शासन गर्न खोज्दैछौ ।
जति गर्व गर, अन्तमा काठको सिरानी मिल्नेछ ॥

अष्ट्रिजझैँ टाउको लुकाई, सत्यसँग डर्छौ किन ?
पर्दा उघारिहेर त, त्यहाँ स्वर्णिम बिहानी मिल्नेछ ॥

मोतीपुर-३, कपिलवस्तु
jivan_gyawali33@yahoo.com

# गजल



ओमप्रकाश भण्डारी

हेर्छ आँखा सारा सृष्टि, छोड्न केही जान्दैन ऊ ।
हत्या हिंसा बलात्कार मोड्न केही जान्दैन ऊ ॥
न्याय लेख्छ पाना भर्छ लागु गर्न सक्दैन ऊ
फूल रोप्छ पानी हाल्छ, गोड्न केही जान्दैन ऊ ॥

कुर्सीलिप्सा सत्तामोह चोरी औँला झुक्दैन यी ।
देश मात्र बोल्छ नेता, नाता तोड्न जान्दैन ऊ ॥

राम्रो हेर्न खोज्छ दिल पाखा बस्न मान्दैन ऊ ।
कर्तव्यको गुनासोमा अरू जोड्न जान्दैन ऊ ॥

सुन्छु गफ देशले दिन्छ, अरू केही जान्दिन म ।
अन्यायको पर्खाललाई फोड्न जान्दैन ऊ ॥

जिन्दगीमा अघि बढ्न काल साथ दिँदैन यो ।
सत्यताको पछ्यौरी त्यो ओढ्न जान्दैन ऊ ॥

-अछाम

# तीन मुक्तक



सुदीप मिश्र

तिम्रो जित मेरो हार भए पनि ।
खुशी नै छु तिमीले जिती गए पनि ॥
सिद्धिँदैन कहिल्यै फूलको अस्तित्व ।
अरुसँगै तिमी खुसी रहे पनि ॥

लत्रिएको सल समेट्न आऊँ कि ।
रहिछौ नि एक्लै म भेट्न आऊँ कि ॥
विगतका ती पुराना कुराले ।
लाग्दो हो नि तलतल, म मेट्न आऊँ कि ॥

वर्तमानलाई अतीतले चुनौती दिएपछि ।
व्यर्थ बन्छ जिन्दगी आँसु पिएपछि ॥
पहिले त तिमी माया माया भन्थ्यौ नि ।
बल्ल आज थाहा पायौ मुटु सिएपछि ॥

-सिन्धुकोट-४, सिन्धुपाल्चोक
nsmanam35@gmail.com

# शिव



-तोटक

सोमनाथ कोइराला

शिव कीर्तनले मन सङ्लिदियोस्
जहिल्यै शुभयाम बनी सकियोस् ।
रिसराग सबै अब त्याग गरूँ
कहिल्यै पनि यो भवमा नपरूँ ।।१

शुभ शक्ति मिलोस् अनि भक्ति मिलोस्
अझ ज्ञान र हर्ष विरक्ति मिलोस् ।
म निराकृति भै लय बन्न सकूँ
रसिलो अनि चिन्मय बन्न सकूँ ।।२

ममता अनि शोक र मोह भुली
अझ होससँगै म हिडूँ नभुली ।
अब दम्भ अहंकृति भुल्न सकूँ
शशिझैं नभमा अनि फुल्न सकूँ ।।३

गहिरा सुविचार म छर्न सकूँ
जिइ केही यही अब गर्न सकूँ ।
बढुँ उन्नतिमा खगको गतिमा
शुभ भावसँगै अनि सन्मतिमा ।।४

किन लोभ र रोष गरूँ जगमा
सब व्यर्थ सबै सुखका पथमा ।
यदि शान्ति यहाँ धन दिन्छ भने
किन रुन्छ धनी सुख किन्छ भने ।।५

भयले भवको लय हुन्छ यहाँ
डरत्रासविहीन छ ठाउँ कहाँ ।
त्यही ईश्वरको शुभ हो चरण
शिवशक्तिसँगै म गरूँ शरण ।।

-याङ्पाङ्-१, भोजपुर
somnath.koirala@yahoo.com

# गजल

सन्तोष अधिकारी

-स्रग्विणी

रामको नामले तार यो जिन्दगी
वेदको सारले बार यो जिन्दगी ।।

भाग दौडी जति जीत हुन्न कसै ।
जित्न धैर्य लिई हार यो जिन्दगी ।।

चल्नु आदर्शले हर्ष सङ्घर्षले ।
द्वन्द्व षडयन्त्रको मार यो जिन्दगी ।।

फूल रातो र स्वादिष्ट होस् त्यो फल ।
तिक्त नै नीम होस् सार यो जिन्दगी ।।

पोलिएको छ संसारको अग्निमा ।
व्यर्थ खुर्सानीको खार यो जिन्दगी ।।

छट्पटी छट्पटी भक्ति रून्छिन् सधैँ ।
कृष्णको भक्ति चोर् जार यो जिन्दगी ।।

शोकको, मोहको रोगको द्वेषले ।
बोक्नुपर्ने त्यसै भार यो जिन्दगी ।।



नारायणप्रसाद घिमिरे

# केही मुक्तक

कहिले असल, कहिले बदमासजस्तो लाग्छ
कसैलाई धर्ती कसैलाई आकाशजस्तो लाग्छ ।
जसले जे-जे सोचे पनि जेजे भने पनि हुने
भगवान् भनेकै तपाईंको विश्वासजस्तो लाग्छ ॥

सबैलाई आफ्नै सेरोफेरो प्यारो लाग्छ
तँलाई तेरो अनि मलाई मेरो प्यारो लाग्छ ।
दुःख अलि फरक छ र त यहाँ दुःख छ
मेरो दुःख तँलाई, मलाई तेरो प्यारो लाग्छ ॥

घरी जोड्नैपर्ने घरी घटाउनैपर्ने
सबैकुरा जसोतसो अटाउनैपर्ने ।
सानो कोठा जिन्दगीको, मनै चिरा पारी
केही थप्दा केही चाहिँ हटाउनैपर्ने ॥

कहाँ कस्तो होला भन्ने सोचेकै पो थिइनँ ।
यहाँ यस्तो होला भन्ने सोचेकै पो थिइनँ ॥
मैले हतारमा तिम्रो भलो चिताइहालेँ
सोचेजस्तो होला भन्ने सोचेकै पो थिइनँ ॥

एउटा संसार हल्लाउने नेतामा जुन दम हुन्छ ।
त्यो त एउटा सच्चा मुक्तकअघि अलि कम हुन्छ ॥
सानो भएर के भयो त ? शक्तिशाली भएपछि
सोच्नुस् किन संसार काँप्छ ? जहाँ अणुबम हुन्छ ॥

-लामिडाँडा-४, दोलखा
atnepal@yahoo.com

# गजल

✍ चिरञ्जीवी खतिवडा

बालेर शोक आगो छाती सुकाउँदैछु ।
अस्तित्वहीन बन्दै मुन्टो लुकाउँदैछु ॥
गल्ती हजार मेरा दोषी बनैं जगत्मा ।
यो आँशुले भिजेको आँखा झुकाउँदैछु ॥
एकान्त जून हेर्दा खस्दैछ अश्रुधारा ।
यो प्राणलाई भित्रै छेकी रुकाउँदैछु ॥
पोल्दैछ घाउ भित्री त्यो वाक्यबाण बिझ्दा ।
संवेदना रसाई गाँठो फुकाउँदैछु ॥
रोई मुहार छोपी बित्दैछ जिन्दगानी ।
यो भाग्य एक ऐना आफैँ चुकाउँदैछु ॥

---

# गजल

✍ पर्वतराज घिमिरे

लाग्दैछ सूर्य बन्दै आफैँ उदाउँजस्तै ।
राखेर विश्व हत्केलामा नचाउँजस्तै ॥
क्वैसँग छैन मेरो सच्चा, कुनै चिनारी ।
लाग्दैछ फेरि नौलो पहिचान बनाउँजस्तै ॥
बग्दैछ आज खोला संसारमा रगतको ।
लाग्दैछ प्रेमको यो धारा बगाउँजस्तै ॥
अल्छी गरेर सुत्दासुत्दै अहो म थाकैँ ।
किन लाग्छ उन्नतिमा पाइला बढाउँजस्तै ॥
किन देशलाई केही गर्दैन खै युवाले ।
सोच्दैछु आज सबलाई, वाचा बँधाउँजस्तै ॥
यी चेहरा सबैमा देख्दैछु घोर निराशा ।
लाग्दैछ यी मुहार्मा हाँसो फुलाउँजस्तै ॥

# पाँच मुक्तक



रूपेश अधिकारी

बाहिरी पोसाकले भित्री रूप खुल्दै खुल्दैन
विश्वास माथि गरेको घात कसैले भुल्दैन ।
जरा काटी फेदमा जत्ति पानी हाल
ओइलाएको बोटमा फूल फुल्दै फुल्दैन ॥१॥

छोडी मलाई उनको घरबार बस्दैछ रे
झुपडी हैन सुनको दरबार बस्दैछ रे ॥
प्रेमको अर्थ नबुझ्नेलाई के थाहा पीडा
वाचाकसम आज सारा तरबार बस्दैछ रे ॥२॥

कालको निम्तो लेखिएको हुँदैन पात्रामा
भाग्य लेख्न सकिँदैन जिन्दगीको यात्रामा ।
यो संसार सारा क्षणिक हो भने
के का लागि मोह गर्छौ खल्ती छैन कात्रामा ॥३॥

जन्मिएपछि सबैलाई जात चाहिँदोरहेछ ।
उकाली ओरालीमा हात चाहिँदोरहेछ ॥
धोका पाउँछ जब जिन्दगीले यात्रामा
तब जिन्दगीलाई पनि सराप चाहिँदोरहेछ ॥४॥

कोपिला लागेपछि यहाँ कुन फूल लाग्दैन
सुन्दर जुन देखेपछि कहाँ हुल लाग्दैन ।
संसार यस्तै छ हजुर सबै राम्रै खोज्छन्
कसैलाई धोका दिंदा पनि भूल लाग्दैन ॥५॥

-थाक्रे-२, धादिङ
adhikarirupesh12@yahoo.com

# पाँच मुक्तक



सागर खनाल

तिम्रै लागि एकअर्कामा खिचातानी हुनसक्छ
यसमा धेरै दोषी तिम्रो जवानी हुन सक्छ ।
आफ्नो कुरा आफैँसँग राख्यौ भने मात्र
नत्र धेरै नराम्रो कुराकानी हुनसक्छ ॥१॥

गाढा माया मधुरो बनाउँछ दुनिया
विचरो भन्दै बबुरो बनाउँछ दुनिया ।
मेरी आमा मरेकै निहुँमा
मलाई किन टुहुरो बनाउँछ दुनिया ॥२॥

नभएको प्रमाण अनि तथ्य बनाउँछ
तथ्यविनाको कुरालाई सत्य बनाउँछ ॥
यो कानुन निष्ठुर भएर त होला
दृश्यपात्रलाई पनि नेपथ्य बनाउँछ ॥३॥

निर्बल शत्रुसँगै हार हुँदोरहेछ,
विवशतामा परी स्वीकार हुँदोरहेछ ।
अरे यार तिमी धाँदलीको कुरा गर्छौ,
त्यहाँ त दुई+एक चार हुँदो रहेछ ॥४॥

न आश हुनेछ न सास हुनेछ
यमराज पनि मेरै पास हुनेछ ॥
रोदनको आगो त दुवैतर्फ सल्किएला
मेरो लास हुनेछ तिम्रो सहवास हुनेछ ॥५॥

-कोपवा-५, कपिलवस्तु
sagar.com@hotmail.com

## गजल



रामप्रसाद खतिवडा

धार विनाको भुत्ते तरबारको के अर्थ ?
जनभावै नबुझ्ने सरकारको के अर्थ ?

अन्यायमा फस्दा उकास्ने हात कतै मिलेन
चितामा पुग्दा चढेको हारको के अर्थ ?

कानून जिउँदालाई हो मरेकालाई होइन
नदी सुकेर बचेको किनारको के अर्थ ?

सत्त्व खोसिएकालाई जत्तिसुकै सम्झाऊ
विधवाको मुहारमा शृङ्गारको के अर्थ ?

दुनियाँले के गऱ्यो र आज ऋण तिरौँ
जो आफूमा मालिक उसलाई संसारको के अर्थ

-बयरवन-८, मोरङ

---

## गजल



उपेन्द्र मरहट्टा

हारै हारको खात लागेछ उसलाई ।
दशा नै साँढेसात लागेछ उसलाई ॥

सबैको सहयोगी बन्ने प्रयास गर्थ्यो
आज तिनैबाट घात लागेछ उसलाई ॥

द्वेष घटाई प्रेमले सबैलाई जोड्यो
र पनि शून्य हात लागेछ उसलाई ॥

सबैलाई चढाउँदै माथि चढ्दै थियो
पुग्दानपुग्दै लात लागेछ उसलाई

यस्तै विसङ्गति देखी एकान्तमा पस्दा
भगुवा भनी बात लागेछ उसलाई

-घ्याल्चोक-५, गोरखा
marahattaupendra@gmail.com



रमाकान्त पौडेल

# मुक्तक

तिमीजस्तै लाखौँ नारी के गरुन्
आफ्नै भइदिन्छ सिकारी के गरुन् ।
घरैबाट जबर्जस्ती इज्जत लुटिदिँदा
विचरा छोरी बुहारी के गरुन् ॥१॥

एकपटक होइन हार बारबार हुनुपर्छ
जत्तिपटक भएपनि स्वीकार हुनुपर्छ ।
अठोट गर विजयले तिम्रै पिछा गर्छ
पक्का सफल बन्छु भन्ने विचार हुनुपर्छ ॥२॥

अचम्म लाग्छ मलाई सहर देखेर
त्यहाँ बस्ने मान्छेको रहर देखेर ।
हाँस्छु अनि दुःखी पनि बनिहाल्छु
गाउँ छोड्नेहरूको लहर देखेर ॥३॥

मर्नैपर्छ एकदिन सुनेर रोएँ
भइन्छ रे बलहीन सुनेर रोएँ ।
जहिले जहाँ जे पनि हुनसक्छ
छैन कुनै यकिन सुनेर रोएँ ॥४॥

आफ्नो भाग्य आफैँले लेख्न नसकेर
अतीतजस्तै भविष्यलाई देख्न नसकेर ।
यो जीवनमा धेरै ठक्कर खानुपर्‍यो मैले
टेक्नुपर्ने शिखरमा नै टेक्न नसकेर ॥५॥

-दुर्लुङ्ग-४, पर्वत
kanta.ramu9@yahoo.com

# गजल

अनुराग खतिवडा

भाडिँदै जान्छ खेल झेली देखेपछि ।
झुक्तिन्छन् सबैजना कोसेली देखेपछि ॥

अन्याय भयो तर के गर्ने र हजुर ।
लुक्नैपर्छ पुतली जुरेली देखेपछि ॥

बाध्यताले अँध्यारो जीवन बिताउँदा ।
रमाउँदैन र को ? उजेली देखेपछि ॥

खोज्दाखोज्दै उपाय पुगिन्छ अदालत ।
आशा मिल्छ कानूनको ठेली देखेपछि ॥

युद्ध जितेर पुतली चरा बनेपनि ।
भाग्नैपर्छ विचरो गुलेली देखेपछि ॥

-लामिडाँडा-८, दोलखा

---

# गजल

अजित घिमिरे

जिन्दगी यो मुस्कुराई फुल्छ बगैँचामा ।
त्यसैले यो जिन्दगी झन् खुल्छ बगैँचामा ॥

आफू कहाँ आफूबाटै हराउन सक्छ ?
जिन्दगीले आफैँलाई भुल्छ बगैँचामा ॥

आनन्दको तलासमा फूलको रस चुसी ।
माहुरी त्यो पुतलीझैँ डुल्छ बगैँचामा ॥

भेटिँदैन अन्त कहीँ खोज्दा मरीतरी ।
जिन्दगीलाई तार्नसक्ने पुल छ बगैँचामा ॥

फुलाएर ओठमाथि मुस्कानको फूल
स्वयं स्रष्टा नारायण झुल्छ बगैँचामा ।

-देवघाट-२, तनहुँ

# मान्छेको लक्ष्य ईश्वरप्राप्ति



नारायण जोशी

-तोटक

अति उत्तम जीवन मानवको
जुट सार्थक गर्न बुझेर छिटो ।
त्यज भौतिक मोजविलासजति
गर चिन्तन ईश्वर कृष्ण हरि ॥

परमेश्वर जीव दयालु उनी
शरणागत हे त्रिपुरारि भनी ।
गर अन्तिम निर्गुण साधनको
भज ॐ शिव ॐ शिव ॐ शिव ॐ ॥

शिव सार असार जगत् समझी
सुतबन्धुपिता बुझ पान्थसरी ।
धन-गेह अनित्य विषाद कति
सब छुट्छ यही मृगतृष्णसरी ॥

शिवभक्त बनी त्यज मोहजति
गुरुमार्फत सिद्ध हुनेछ गति ।
गुरु सन्त अनन्त धराविरही
शिवको अवतार सकार तिमी ॥

धरणीतलका सब मानव हो
उठ जाग समुन्नति गर्न छिटो ।
सब हेर तिमी छ विकास कति
कति शिक्षित छन् यही विश्वभरि ॥

बुझ लक्ष्य छ के सब मानवको
कुन ठाउँ थियौ किन जन्म भयो ।
सब उत्तर प्राप्त भयो त भने
बुझ निर्गुणरूपसरी म भएँ ॥

-महेश विद्यापीठ
देवघाट-२, तनहुँ

# गजल

सूर्यप्रसाद पौडेल

हिमालजस्तै मुस्कुराउने त्यो दाँत मनपर्‍यो ।
अझै सुन्दर अक्षर लेख्ने त्यो हात मनपर्‍यो ॥

पूर्णिमाको जिन्दगीमा कालो बादल ल्याए पनि ।
औँसी होइन जुनेली त्यो रात मनपर्‍यो ।

सत्यतालाई लत्याएर कृत्रिमतामा रम्न खोज्यौ ।
यथार्थलाई लत्याउने तिम्रो त्यो लात मनपर्‍यो ॥

बोटमा फुल्ने फूललाई टिपी कुल्चिएर फाले पनि ।
अरु होइन सत्य तिम्रो त्यो घात मनपर्‍यो ॥

दुःख पर्दा बल्ल खाइस् भन्दै तिमी हिँडे पनि ।
सुख पर्दा दिने तिम्रो त्यो साथ मनपर्‍यो ॥

---

# गजल

कोमल नेपाल

कान्तियुक्त ज्ञानदीप बल्छ आखिर ।
पाप, पुण्य कर्म सारा जल्छ आखिर ॥१॥

मान, शान, दम्भ, घृणा, उच्च लालसा ।
हुन्न द्रव्य शक्तिशाली गल्छ आखिर ॥२॥

स्वच्छ वृक्ष दिन्छ छायाँ, प्राण जीवन ।
काल बित्छ, सुक्छ हाँगा ढल्छ आखिर ॥३॥

पल्लवी त्यो पुष्पमाला जान्छ वैलिई ।
लाग्छ चैत ताप हावा चल्छ आखिर ॥४॥

बन्धु, मित्र, पुत्र, राजा, स्त्री गए कता ?
सोच्छ सृष्टि रात भस्मै दल्छ आखिर ॥५॥

काव्य पढ्नु हट्छ द्वेष चित्तको मल ।
चुन्छ मोक्षमार्ग माया छल्छ आखिर ॥६॥

# गीतम्



नवराज घिमिरे

विश्वप्रसिद्धा तपसा सिद्धा
प्रवहति हिमनदी यत्र विशुद्धा ।
ज्ञानविधात्री पशुपतिपाता
शूरवीरत्राता मदीया माता ॥

फलकुसुमानि खलु रम्यानि
सकलजगति न हि गम्यानि ।
सुललितललिता वनतरुलतिका
गुहागिरिकन्दरनिर्झरसलिला ॥

वातमृगखड्गौ गण्डकीतीरे
ग्राहोऽपि तिष्ठति त्रिशुलीनीरे ।
कोकिलः कूजति कानने कुत्र
जन्मधरित्री मदीया विचित्रा ॥

-बेताली-७, रामेछाप

---

# गजल



कुमार अर्याल

धर्ती रूँदैछिन् टाढा आकाश देखेर
कोही महलमा कसैको सडकमा बास देखेर ॥
रुन सकिएन अनि हाँस्न सकिएन
दुःख जति आफ्नै आसपास देखेर ॥
आज ऊ भित्रैदेखि गद्गद् भा'छ अरे
भूतपूर्वको केही खास देखेर ॥
पूर्व लुट्यो पश्चिम लुट्यो उत्तर दक्षिण लुट्यो ।
बल्ल आज भयभीत भो पर्दाफास देखेर ।
दुई मिली गर्थे हिजो लुट्ने चुट्ने कार्य
सत्य आज ऊ ज्ञानी भो साथीको लास देखेर ॥

-हाँडीखोला-२, मकवानपुर

# गजल



युगनाथ तिमिल्सिना

जानेर गरियो या नजानी गरियो ।
नाराम्रा काम सबै छानी छानी गरियो ।।

घर फोडेर होस् या बाख्रो चोरेर होस्
जिन्दगानीमा चाहिने आम्दानी गरियो ।।

यस्तो खतरा जिन्दगी बिताएर आएँ
ढालको सिरक तरबार सिरानी गरियो ।।

राम्रो कार्य कदापि गर्नै सकिएन
विश्वास गर्नेलाई बेइमानी गरियो ।।

जोशमा सबै हुन गयो आज दुःख लाग्छ
सानैदेखि नचाहिने बानी गरियो ।।

-खौलालाँकुरी-८, पर्वत

---

## दुई मुक्तक



सुजन ढकाल

जस्तो कुँद्यो उस्तै बन्ने ढुङ्गा गलत हो र ?
वैलिएर झर्नैपर्ने थुङ्गा गलत हो र ?
पानीमाथी हिँडेपछि कस्को चिह्न रहन्छ र ?
सबको उखान बन्नैपर्ने डुङ्गा गलत हो र ?

-थप्रेक-२, तनहुँ
dhakal85@gmail.com



प्रवेश घिमिरे

थाहा छैन कति हुन्छ मात्रा जिन्दगीको
यत्ति भन्ने सीमा छैन यात्रा जिन्दगीको ।
कुन घटना सम्झिनु र सबै खिटिरपिटिर
हेर्दैछु म माथिबाट जात्रा जिन्दगीको ।।

-रानीगञ्ज-८, सर्लाही
prabeshghm@gmail.com